# ॥ श्रीशातातपस्मृतिः ॥

सङ्कलन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा
(sapkotamps731@gmail.com)

**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

**॥ अथ ॥**

# ॥ शातातपस्मृतिः ॥

## ॥ अथ प्रथमोऽध्यायः ॥

**प्रायश्चित्तविहीनानां महापातकिनां नृणाम् ।**
**नरकान्ते भवेज्जन्म चिह्नाङ्कितशरीरिणम् ॥१॥**

प्रायश्चित नगर्ने महापापी मानिसको जन्म नरक भोगको अन्तमा (पापका) चिह्न लिएको शरीरका साथ (फेरी यस लोकमा) हुन्छ ।

**प्रतिजन्म भवेत्तेषां चिह्नं तत्पापसूचितम् ।**
**प्रायश्चित्ते कृते याति पश्चात्तापवतां पुनः ॥२॥**

प्रत्येक जन्ममा त्यो पापको सूचक चिह्न उसका शरीरमा हुन्छ तर पश्चात्ताप गर्नेको त्यो चिह्न प्रायश्चित गरेपछि नासिन्छ ।

**महापातकजं चिह्नं सप्तजन्मनि जायते ।**
**उपपापोद्भवं पञ्च त्रीणि पापसमुद्भवम् ॥३॥**

महापापको चिह्न सात जन्मसम्म, उपपातकको पाँच जन्मसम्म तथा अन्य पापको चिह्न तीन जन्मसम्म उत्पन्न हुन्छ ।

**दुष्कर्मजा नृणां रोगा यान्ति चोपक्रमैः शमम् ।**
**जपैः सुरार्चनैर्होमैर्दानैस्तेषां शमो भवेत् ॥४॥**

मानिसका दुष्कर्मले उत्पन्न हुने रोग उपायले शान्त हुन्छ । तिनको शान्ति जपले (गायत्री आदि मन्त्र), देवार्चनाले, होमले तथा दानले हुन्छ ।

**पूर्वजन्मकृतं पापं नरकस्य परिक्षय ।**

**बाधते व्याधिरुपेण तस्य जप्यादिभिः शमः ॥५॥**

पूर्वजन्ममा गरिएका पाप नरकमा क्षय भएपछि रोगका रुपमा मनुष्यलाई रोगी पार्दछन् । त्यसको शान्ति जप आदिबाट नै हुन्छ ।

**कुष्ठञ्च राजयक्ष्मा च प्रमेहो ग्रहणी तथा ।**
**मूत्रकृत्छ्राश्मरीकासा अतीसारभगन्दरौ ॥६॥**

कुष्ठरोग, क्षयरोग (राजयक्ष्मा), शरीरका विभिन्न धातु पिसाबसँगै बहने रोग (प्रमेह), खाएको कुरा नपची वा पचे पनि पटकपटक गरी शरीरबाट निस्कने रोग (ग्रहणी), मूत्र रोकिने रोग (मूत्रकृच्छ), पत्थरी, खोकी, छेरपटी वा डायेरिया (अतिसार), गुदद्वार र अण्डकोशका बीचमा आउने खटिरा (भगन्दर),..।

**दुष्टव्रणं गण्डमाला पक्षघातोऽक्षिनाशनम् ।**
**इत्येवमादयो रोगा महापापोद्भवाः स्मृताः ॥७॥**

गनाउने खालका घाउ (दुष्टव्रण), गलगण्ड (गण्डमाला), पक्षाघात तथा अन्धोपन आदि रोग महापापबाट उत्पन्न भएका मानिन्छन् ।

**जलोदरं यकृत् प्लीहा शूलरोगव्रणानि च ।**
**श्वासाजीर्णज्वरच्छर्दिभ्रममोहगलग्रहाः ॥८॥**

पेटमा पानी जम्ने रोग (जलोदर), कलेजोमा लाग्ने रोग (यकृत्), फियोमा लाग्ने रोग (प्लीहा), शूल, पिलो, दम, अजीर्ण, जरो, वमन, रिंगटा, मूर्च्छा, कफ बढेर घाँटी बस्ने रोग (गलग्रह), ।

**रक्तार्बुद विसर्पाद्या उपपापोद्भवा गदाः ।**
**दण्डापतानकश्श्वित्रवपुः कम्पविचर्चिकाः ॥९॥**

रगतको क्यान्सर (रक्तार्बुद), शरीरमा आउने मसिना विमिरा (विसर्प) आदि रोग उपपापबाट उत्पन्न हुन्छन् । धनुष्टङ्कार, शरीरमा आउने अनेक रङ्का गोला दाग, काम्ने रोग, शरीरको कुनै भाग चिलाउने र कन्याउँदा रातो गोलाकार टाटा देखिने रोग (विचर्चिका), ।

**वल्मीकपुण्डरीकाद्या रोगाः पापसमुद्भवाः ।**
**अर्शआद्या नृणां रोगा अतिपापाद्भवन्ति हि ॥१०॥**

हात्तीपाइले तथा पुण्डरिक (एक थरी कुष्ठरोग) आदि रोग अतिपापबाट उत्पन्न हुन्छन् । मानिसमा अल्काई आदि रोग अतिपापले उत्पन्न हुन्छन् ।

**अन्ये च बहवो रोगा जायन्ते पापसङ्करात् ।**
**उच्यन्ते च निदानानि प्रायश्चित्तानि वै क्रमात्॥११॥**

यसबाहेक अरु धेरै रोग पापको सङ्करत्वबाट उत्पन्न हुन्छन् । यिनको औषधी र प्रायश्चित क्रमैले बताउन लागिएको छ ।

**महापापेषु सर्वं स्यात्तदर्द्धमुपपातके ।**
**दद्यात् पापेषु षष्ठांशं कल्प्यं व्याधिबलाबलम्॥१२॥**

महापापमा सबै, उपपापमा आधा र अन्य पापमा छैटौं भाग प्रायश्चित गर्नू । यस विषयमा रोगको अवस्था र दुर्बलताको पनि विचार गर्नू ।

**अथ साधारणं तेषु गोदानादिषु कथ्यते ।**
**गोदाने वत्सयुक्ता गौः सुशीला च पयस्विनी॥१३॥**

गोदान आदि विषयमा साधारण कुरा बताइन्छ-गोदानका सम्बन्धमा यो स्मरणीय छ कि गाई बाच्छा भएकी, शुशील र लैनु हुनु पर्दछ ।

**वृषदाने शुभोऽनड्वान् शुक्लाम्बरसकाञ्चनः ।**
**निवर्तनानि भूदाने दश दद्याद् द्विजातये॥१४॥**

बैलको दानमा शुभ लक्षण भएको, सेतो वस्त्र तथा सुनले अलङ्कृत साँढे दिइनु पर्दछ । भूमिदानमा ब्राह्मणलाई दश निवर्तनको मात्रामा भूमि दिइनु पर्दछ ।

**दशहस्तेन दण्डेन त्रिंशद्दण्डं निवर्तनम् ।**
**दश तान्येव गोचर्म दत्वा स्वर्गे महीयते॥१५॥**

दश हाते लौरोको तीस लौरो जमिन एक निवर्तन हुन्छ । यस्तो दश निवर्तन जमिन एक गोचर्म हुन्छ । यति जमिन दिएर मनुष्य स्वर्ग लोकमा महानता प्राप्त गर्दछ ।

**सुवर्णशतनिष्कन्तु तदर्द्धार्द्धप्रमाणतः ।**

**अश्वदाने मृदु श्लक्ष्णमरुश्वं सोपस्करं दिशेत् ॥१६॥**

सुन दानमा सय निष्क (स्वर्ण मुद्रा) त्यसको आधा वा त्यसको पनि आधा निष्क दिनु पर्दछ ।
घोडाको दानमा कोमल, चिल्लो घोडा काठी आदि (पल्यान) सहित दिइनु पर्दछ ।

**महिषीं माहिषे दाने दद्यात् स्वर्णायुधान्विताम् ।**
**दद्यात् गजं महादाने सुवर्णफलसंयुतम् ॥१७॥**

महिषी दानमा सुनको हतियारले युक्त भैंसी दानमा दिनू । महादानमा
सुनको फलले युक्त हात्ती दानमा दिनू ।

**लक्षसंख्यार्हणं पुष्पं प्रदद्याद्देवतार्चने ।**
**दद्यात् द्विजसहस्राय मिष्टान्न द्विजभोजने ॥१८॥**

देवताको अर्चनामा एक लाख पूजायोग्य फूलहरु चढाउनू ।
ब्राह्मण-भोजनमा एक हजार ब्राह्मणलाई मीठो भोजन दिनू ।

**रुद्रं जपेल्लक्षपुष्पैः पूजयित्वा च त्र्यम्बकम् ।**
**एकादश जपेद्रुदान् दशांश गुग्गुलैर्घृतैः ॥१९॥**
**हुत्वाभिषेचनं कुर्य्यान्मन्त्रैर्वरुणदैवतैः ।**
**शान्तिके गणशान्तिश्च ग्रहशान्तिपूर्वकम् ॥२०॥**

शिवको पूजा गरी एक लाख पुष्पले रुद्रको जप गर्नू । एकादश रुद्रको जप गर्नू ।
गोकुलधूप र घिउको दशांश भाग होम गरी वरुण देवताको मन्त्रले अभिषेक गर्नू ।
शान्तिकर्ममा पहिले ग्रहशान्ति गरेर त्यसपछि गणशान्ति गर्नू ।

**धान्यदाने शुभं धान्यं खारीषष्टिमितं स्मृतम् ।**
**वस्त्रदाने पट्टवस्त्रद्वयं कर्पूरसंयुतम् ॥२१॥**

अनाजको दानमा सुन्दर अनाज साठी खारी भरी दान दिनुपर्ने कुरालाई मानिएको छ ।
वस्त्रदानमा कपूर सहित दुईवटा रेशमी कपडा दान दिनुपर्ने बताइएको छ ।

**दशपञ्चाष्टचतुर उपवेश्य द्विजान् शुभान् ।**
**विधाय वैष्णवीं पूजां सङ्कल्प्य निजकाम्यया ॥२२॥**

**धेनुं दद्याद् द्विजातिभ्यो दक्षिणाञ्चापि शक्तितः ।**
**अलङ्कृत्य यथाशक्ति वस्त्रालङ्करणैर्द्विजान् ॥२३॥**

दश, पाँच, आठ वा चार उत्तम ब्राह्मणलाई बसाएर विष्णुको पूजा गरी आफ्नो इच्छा अनुसार सङ्कल्प गरी तिनलाई गच्छे अनुसार कपडा तथा अलङ्कारले अलङ्कृत गरी गाई दानमा दिनू र शक्ति अनुसार दक्षिणा पनि दिनू ।

**याचेद्दण्डप्रमाणेन प्रायश्चित्तं यथोदितम् ।**
**तेषामनसज्ञया कृत्वा प्रायश्चित्त यथाविधि ॥२४॥**
**पुनस्तान् परिपूर्णार्थानर्चयेद्विधिवत् द्विजान् ।**
**सन्तुष्टा ब्राह्मणा दद्यु रनुज्ञां व्रतकारिणे ॥२५॥**

शास्त्रमा बताइएको दण्ड परिमाण अनुसार उसँग प्रायश्चितको याचना गर्नू । उनको आज्ञाले विधिपूर्वक प्रायश्चित गरी धनले परिपूर्ण ती ब्राह्मणको पुनः विधिवत पूजा गर्नू तथा प्रसन्न भएका ब्राह्मणले व्रत गर्नेलाई आशिर्वाद (अनुज्ञा?) दिनू ।

**जपच्छिद्रं तपश्छिद्रं यच्छिद्रं यज्ञकर्मणि ।**
**सर्वं भवति निश्छिद्रं यस्य चेन्छन्ति ब्राह्मणाः ॥२६॥**

ब्राह्मणले चाहे जप र तपको दोष तथा यज्ञकर्ममा हुनसक्ने दोष सबै नै दोषहीन हुन्छन् ।

**ब्राह्मणा यानि भाषन्ते मन्यन्ते तानि देवताः ।**
**सर्वदेवमया विप्रा न तद्वचनमन्यथा ॥२७॥**

ब्राह्मणले जुन कुरा भन्दछन् देवता त्यसलाई मान्दछन् । ब्राह्मण सबै देवताका स्वरुपी हुन्छन् । उनको वचन अन्यथा हुन सक्दैन ।

**उपवासो व्रतश्चैव स्नानं तीर्थफलं तपः ।**
**विप्रैः सम्पादितं सर्वं सम्पन्नं तस्य तत्फलम् ॥२८॥**

उपवास, व्रत, स्नान, तीर्थको फल तथा तप-यी सबैका सबै ब्राह्मणद्वारा जसका लागि सम्पन्न गराइएका छन् उसैका लागि नै त्यो फल सम्पन्न हुन्छ ।

**सम्पन्नमिति यद्वाक्यं वदन्ति क्षितिदेवताः ।**

**प्रणम्य शिरसा धार्य्यमग्निष्टोमफलं लभेत् ॥२९॥**

ब्राह्मणद्वारा 'यो ठीक छ' भनी भनेको कुरा उनलाई प्रणाम गरी ससम्मान स्वीकार गर्नू । यसो गर्नाले मानिसले अग्निष्टोम यज्ञको फल प्राप्त गर्दछ ।

**ब्राह्मणा जङ्गमं तीर्थं निर्जलं सार्वकामिकम् ।**
**तेषां वाक्योदकेनैव शुध्यन्ति मलिना जनाः ॥३०॥**

ब्राह्मण सबै कामनाहरुलाई पूरा गर्ने भएका हिँडडुल गर्ने जलबिनाका तीर्थ हुन् । (पापको मूलबाट) मलिन भएका जनहरु उनको वचन मात्रैले नै शुद्ध हुन्छन् ।

**तेभ्योऽनुज्ञामभिप्राप्य प्रगृह्य च तथाशिषः ।**
**भोजयित्या द्विज्ञान् शक्त्या भुञ्जीत सह बन्धुभिः ॥३१॥**

ब्राह्मणको आज्ञा र आशिर्वाद पाएर तिनलाई आफ्नो गच्छे अनुसार खाना खुवाई त्यसपछि आफन्तका साथ खाना खानू ।

॥ इति शातातपीये धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको
पहिलो अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-०+३१=३१
शुरुदेखिको श्लोक सङ्ख्या : ३१



## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

**ब्रह्महा नरकस्यान्ते पाण्डुकुष्ठी प्रजायते ।**
**प्रायश्चित्तं प्रकुर्वीत स तत्पातकशान्तये ॥१॥**

ब्राह्मणको हत्याराले नरक भोगेपछि श्वेतकुष्ठीका रुपमा जन्मन्छ । उसले त्यो पापका लागि प्रायश्चित गर्नू ।

**चत्वारः कलशाः कार्य्याः पञ्चरत्नसमन्विताः ।**
**पञ्चपल्लवसंयुक्ताः सितवस्त्रेण संयुताः ॥२॥**
**अश्वस्थानादिमृद्युक्तास्तीर्थोदकसुपूरिताः ।**
**कषायपञ्चकोपेता नानाविधफलान्विताः ॥३॥**
**सर्वौषधिसमायुक्ताः स्थाप्याः प्रतिदिशं द्विजैः ।**
**रौप्यमष्टदलं पद्मं मध्यकुम्भोपरि न्यसेत् ॥४॥**
**तम्योपरि न्यसेद् देवं ब्रह्माणञ्च चतुर्मुखम् ।**
**पलार्द्धार्द्धप्रमाणेन सुवर्णेन विनिर्मितम् ॥५॥**

पञ्चरत्नले समन्वित, पञ्चपल्लवले युक्त, सेतो वस्त्रले ढाकिएको, अश्वशाला (सप्तमृत्तिका) आदिको माटोले युक्त, तीर्थको जलले भरिएको, पञ्च कषाय (जामुनु, सिमल, खरौटो, मौलसिरी र बेल) ले युक्त, अनेक थरिका फलफूलले युक्त तथा सबै प्रकारका जडीबुटीले युक्त चार वटा कलश तयार पार्नू पर्दछ र ब्राह्मणबाट यी कलशलाई प्रत्येक दिशामा स्थापित गरिनु पर्दछ । बीचको कलशमाथि चाँदीले बनेको आठपाते कमल राख्नू । त्यसमाथि चतुर्मुखी देवता ब्रह्मालाई स्थापना गर्नू जो एक चौथाई पल सुनले बनेको होस् ।

**अर्चेत् पुरुषसूक्तेन त्रिकालं प्रतिवासरम् ।**
**यजमानः शुभैर्गन्धैः पुष्पैर्धूपैर्यथाविधि ॥६॥**

जजमानले प्रतिदिन तीनै कालमा शुभ चन्दन, फूल र धूपले पुरुष सूक्तका साथ विधिपूर्वक त्यसको अर्चना गर्नू ।

**पूर्वादिकुम्भेषु ततो ब्राह्मणा ब्रह्मचारिणः ।**
**पठेयुः स्वस्ववेदांस्ते ऋग्वेदप्रभृतीन् शनैः ॥७॥**

त्यसपछि ब्रह्मचारी ब्राह्मणले पूर्व आदि दिशामा राखिएका घडामा ऋग्वेद आदि आआफ्ना वेदलाई विस्तारैविस्तारै पाठ गर्नू ।

**दशांशेन ततो होमो ग्रहशान्तिपुरः सरः ।**
**मध्यकुम्भे विधातव्यो घृताक्तैस्तिलहेमभिः ॥८॥**

पहिले ग्रहशान्ति गरेर त्यसपछि बीचको कुण्डमा घिउमा भिजाइएको तिल र सुनको दशांशका साथ होम गर्नु पर्दछ ।

**द्वादशाहमिदं कर्म समाप्य द्विजपुङ्गवः ।**
**तत्र पीठे यजमानमभिषिञ्चेद्यथाविधि ॥९॥**

बाह्र दिनसम्म त्यो कार्य पूरा गरी चौकीमा बसेको जजमानलाई श्रेष्ठ ब्राह्मणले विधिपूर्वक जलले अभिषेक गर्नू ।

**ततो दद्याद्यथाशक्ति गोभूहेमतिलादिकम् ।**
**ब्राह्मणेभ्यस्तथा देवमाचार्य्याय निवेदयेत् ॥१०॥**

त्यसपछि यजमानले शक्ति अनुसार गाई, जमिन, सुन, तिल आदि कुरा ब्राह्मणलाई दान गर्नू तथा देवप्रतिमा आचार्यलाई समर्पित गर्नू ।

**आदित्या वसवो रुद्रा विश्वे देवा मरुद्गणाः ।**
**प्रीताः सर्वे व्यपोहन्तु मम पापं सुदारुणम् ॥११॥**

"आदित्य, वसु, रुद्र, विश्वेदेव, मरुद्गण सबैका सबै प्रसन्न भई मेरा भयङ्कर पाप नाश गरुन् ।"

**इत्युदीर्य्य मुहुर्भक्त्या तमाचार्य्यं क्षमापयेत् ।**
**एवं विधाने विहिते श्वेतकुष्ठी विशुध्यति ॥१२॥**

यसो भनी पुनः भक्तिपूर्वक ती आचार्यसँग क्षमा माग्नू । यो विधान गर्नाले श्वेतकुष्ठी शुद्ध हुन्छ ।

**कुष्ठी गोवधकारी स्यान्नरकान्तेस्य निष्कृतिः ।**
**स्थापयेद् घटमेकन्तु पूर्वोक्तद्रव्यसंयुतम् ॥१३॥**

गोहत्यारा नरकको अन्तमा कुष्ठी हुन्छ । यसको प्रायश्चित यसरी हो की उसले ब्रह्महत्यामा भनिएका वस्तुले युक्त एउटा घडाको स्थापना गर्नू ।

**रक्तचन्दनलिप्ताङ्गं रक्तपुष्पाम्बरान्वितम् ।**
**रक्तकुम्भन्तु तं कृत्वा स्थापयेद्दक्षिणां दिशम् ॥१४॥**

रक्तचन्दनले लिपिएको अङ्ग भएको, रातो फूल र कपडाले युक्त त्यो घडालाई रातो पारी दक्षिण दिशातिर स्थापना गर्नू ।

**ताम्रपत्रं न्यसेत्तत्र तिलचूर्णेन पूरितम् ।**
**तस्योपरि न्यसेद्देवं हेमनिष्कमयं यमम् ॥१५॥**

त्यसमा पिँधिएको तिलले भरिएको एक तामाको भाँडोलाई राख्नू । त्यसमाथि एक निष्क सुनले बनेको यमराजको प्रतिमालाई स्थापना गर्नू ।

**यजेत् पुरुषसूक्तेन पापं मे शाम्यतामिति ।**
**सामपारायणं कुर्य्यात् कलशे तत्र सामवित् ॥१६॥**

'मेरो पाप शान्त होस्' यसो भनी पुरुषसूक्तका साथमा होम गर्नू ।
सामवेद जान्नेले यो कलशमा सामको पारायण गर्नू ।

**दशांशं सर्षपैर्हुत्वा पावमान्यभिषेचने ।**
**विहिते धर्मराजानमाचार्य्याय निवेदयेत् ॥१७॥**

सरस्यूँले दशांश होम गरेपछि पावमानी ऋचाले अभिषेक
गरी यमराज (प्रतिमा) आचार्यलाई दिनू ।

**यमोऽपि महिषारूढो दण्डपाणिर्भयावहः ।**
**दक्षिणाशापतिर्देवो मम पापं व्यपोहतु ॥१८॥**

'भैंसी माथि चढेका, दण्डधर, दक्षिण दिशाका मालिक,
भयङ्कर देवता यमले मेरो पाप नाश गरुन्' ।

**इत्युच्चार्य्य विसृज्यैनं मासं मद्भक्तिमाचरेत् ।**
**ब्रह्मगोवधयोरेषा प्रायश्चित्तेन निष्कृतिः ॥१९॥**

यति भनि सकेपछि यमराजको विसर्जन गरी एक महिनासम्म उत्तम भक्ति गर्नू । प्रायश्चित गरी ब्रह्महत्या र गोहत्याबाट निस्कने उपाय यही नै हो ।

**पितृहा चेतनाहीनो मातृहान्धः प्रजायते ।**
**नरकान्ते प्रकुर्वीत प्रायश्चित्तं यथाविधि ॥२०॥**

पिताको हत्या गर्ने चेतनाहीन तथा माताको हत्या गर्ने अन्धो भएर जन्मन्छ । यस्ता

मानिसले नरकको अन्तमा विधि अनुसार प्रायश्चित गर्नू ।

**प्राजापत्यानि कुर्वीत त्रिंशच्चैव विधानतः ।**
**व्रतान्ते कारयेन्नावं सौवर्णपलसम्मिताम् ॥२१॥**

यो विधान अनुसार तीस वटा प्राजापत्य व्रत गर्नू र व्रतको
अन्तमा एक पल सुनको डुङ्गा बनाउनू ।

**कुम्भं रौप्यमयञ्चैव ताम्रपात्राणि पूर्ववत् ।**
**निष्कहेम्ना तु कर्त्तव्यो देवः श्रीवत्सलाञ्छनः ॥२२॥**

पहिलेको जस्तै चाँदीले बनेको घडा तथा तामाका पात्र आदिको विधान गरी एक निष्क
सुनले श्रीवत्स चिह्नले युक्त विष्णु बनाउन लगाउनू ।

**पट्टवस्त्रेण संवेष्ट्य पूजयेत्तं विधानतः ।**
**नावं द्विजाय तां दद्यात् सर्वोपस्करसंयुताम् ॥२३॥**

त्यसलाई रेशमी कपडाले बेरेर विधिपूर्वक पूजा गर्नू र सारा
सामग्री सहित त्यो डुङ्गा ब्राह्मणलाई दिनू ।

**वासुदेव ! जगन्नाथ ! सर्वभूताशयस्थित ! ।**
**पातकार्णवमग्नं मां तारय प्रणतार्त्तिहृत् ! ॥२४॥**

"हे वासुदेव, हे जगत्का स्वामी, हे सबै प्राणीका हृदयवासी" हे चरणमा झुक्नेको दुःखहर्ता
पापको सागरमा डुबेको मलाई पार लगाइ दिनुहोस् ।

**इत्युदीर्य्य प्रणम्याथ ब्राह्मणाय विसर्जयेत् ।**
**अन्येभ्योऽपि यथाशक्ति विप्रेभ्यो दक्षिणां ददेत् ॥२५॥**

यसो भनी प्रणाम गरेपछि त्यो ब्राह्मणलाई दिनू र अरु ब्राह्मणहरुलाई पनि गच्छे
अनुसार दक्षिणा प्रदान गर्नू ।

**स्वसृघाती तु बधिरो नरकान्ते प्रजायते ।**
**मूको भ्रातृवधे चैव तस्येवं निष्कृतिः स्मृता ॥२६॥**

दीदिबहिनीको हत्या गर्ने नरकको अन्तपछि बहिरो भई जन्मन्छ । दाजुभाई मार्ने लाटो भएर जन्मन्छ । त्यस्ताको प्रायश्चित यस्तो बताइएको छ- ।

**सोऽपि पापविशुद्ध्यर्थं चरेच्चान्द्रायणव्रतम् ।**
**व्रतान्ते पुस्तकं दद्यात् सुवर्णफलसंयुतम् ॥२७॥**

यस्ता मानिसले पनि पापको शुद्धताका लागि चान्द्रायण व्रत गर्नू र व्रतका अन्तमा सुनको फलले युक्त पुस्तक दानमा दिनू ।

**इमं मन्त्रं समुच्चार्य्य ब्राह्मणीं तां विसर्जयेत् ।**
**सरस्वती ! जगन्मातः ! शब्दब्रह्माधिदेवते ! ॥२८॥**
**दुष्कर्मकरणात् पापात् पाहि मां परमेश्वरि ! ।**
**बालघाती च पुरुषो मृतवत्सः प्रजायते ॥२९॥**

यो मन्त्रले सरस्वतीको विसर्जन गर्नु-"हे सरस्वती !, हे जगतकी माता !, हे शब्द ब्रह्मकी अधिष्ठात्री देवी !, हे परमेश्वरी ! दुष्कर्मबाट उत्पन्न हुने भएका पापबाट मेरो रक्षा गर । बालकको हत्या गर्ने पुरुष मृतकको पिताका रूपमा जन्म लिन्छ अर्थात् उसका बच्चा हुँदैनन् ।

**ब्राह्मणोद्वाहनञ्चैव कर्त्तव्यं तेन शुद्धये ।**
**श्रवणं हरिवंशस्य कर्त्तव्यञ्च यथाविधि ॥३०॥**

उसले पापशुद्धिका लागि ब्राह्मणको विवाह गराउनु पर्दछ र हरिवंश पुराणको विधिपूर्वक श्रवण गर्नुपर्दछ ।

**महारुद्रजपं चैव कारयेच्च यथाविधि ।**
**षडङ्गैकादशै रुद्रै रुद्रः समभिधीयते ॥३१॥**
**रुद्रैस्तथैकादशभिर्महारुद्रः प्रकीर्त्तितः ।**
**एकादशभिरेतैस्तु अतिरुद्रश्च कथ्यते ॥३२॥**

तथा विधिपूर्वक महारुद्रको जप गर्नु पर्दछ । छ अङ्गले युक्त एकादश रुद्रले युक्त एउटालाई रुद्र भनिएको छ । यसरी नै एकादश रुद्रले एउटा महारुद्र हुन्छ र यि एघार महारुद्रले एउटा अतिरुद्र हुन्छ ।

**जुहुयाच्च दशांशेन दूर्वयायुतसंख्यया ।**
**एकादश स्वर्णनिष्काः प्रदातव्याः सदक्षिणाः ॥३३॥**

दश हजारको संख्यामा दूबोको घाँसले दशांश होम गर्नू र दक्षिणाका
साथमा एघार निष्क सुन दिइनु पर्दछ ।

**पलान्येकादश तथा दद्याद् द्विजानुसारतः ।**
**अन्येभ्योऽपि यथाशक्ति द्विजेभ्यो दक्षिणां दिशेत् ॥३४॥**

साथै एघार पल सुन ब्राह्मणहरुलाई क्रम अनुसार (अर्हता) दिइनु पर्दछ ।
अन्य द्विजलाई पनि गच्छे अनुसार दक्षिणा दिनू ।

**स्नापयेद्दम्पती पश्चान्मन्त्रैर्वरुणदैवतैः ।**
**आचार्य्याय प्रदेयानि वस्त्रालङ्करणानि च ॥३५॥**
**गोत्रहा पुरुषः कुष्ठी निर्वंशश्चोपजायते ।**
**स च पापविशुद्ध्यर्थं प्राजापत्यशतञ्चरेत् ॥३६॥**

गोत्रको हत्यारा पुरुष कुष्ठी र वंशहीन हुन्छ तथा त्यो पापका
शुद्धताका लागि सयपटक प्राजापत्य व्रत गर्नू ।

**व्रतान्ते मेदिनीं दत्त्वा श्रृणुयादथ भारतम् ।**
**स्त्रीहन्ता चातिसारी स्यादश्वत्थान् रोपयेद्दश ॥३७॥**

व्रतका अन्तमा जमिन दान गरी महाभारत सुन्नू । स्त्रीको हत्यारा अतिसारको रोगी हुन्छ ।
त्यो पाप शुद्ध पार्न दश वटा पीपलको रुख रोप्नू ।

**दद्याच्च शर्कराधेनुं भोजयेच्च शतं द्विजान् ।**
**राजहा क्षयरोगी स्यादेषा तस्य च निष्कृतिः ॥३८॥**

उसले चिनी (वा सखर) को गाई दान गर्नू तथा सय जना ब्राह्मणलाई खुवाउनू । राजाको
हत्यारा क्षयरोगी हुन्छ । त्यसको पार पाउने उपाय यो छ की..।

**गोभूहिरण्यमिष्टान्नजलवस्त्रप्रदानतः ।**
**घृतधेनुप्रदानेन तिलधेनुप्रदानतः ॥**

**इत्यादिना क्रमेणैव क्षयरोगः प्रशाम्यति ॥३९॥**

गाई, जमिन, सुन, मिष्ठान्न, पानी तथा कपडाको दान गर्नाले, घिउ दान गर्नाले तथा तिलको गाई दान गर्नाले त्यसबाट पार पाइन्छ । यही क्रमले नै क्षयरोग शान्त हुन्छ ।

**रक्तार्बुदी वैश्यहन्ता जायते स च मानवः ।**
**प्राजापत्यानि चत्वारि सप्त धान्यानि चोत्सृजेत् ॥४०॥**

वैश्यको हत्या गर्ने मानिस रक्तशोथ रोगी भएर जन्मन्छ । उसले चार प्राजापत्य व्रत गर्नू तथा सात थरी अन्न मिलाएर दान गर्नू ।

**दण्डापतानकयुतः शुद्रहन्ता भवेन्नरः ।**
**प्राजापत्यं सकृच्चैव दद्याद् धेनुं सदक्षिणाम् ॥४१॥**

शूद्रको हत्या गर्ने मानिस धनुष्टङ्कार रोगी हुन्छ । उसले एक पटक प्राजापत्य व्रत गर्नू तथा दक्षिणाका साथमा गाई दिनू ।

**कारूणाञ्च वधे चैव रूक्षभावः प्रजायते ।**
**तेन तत्पापशुद्ध्यर्थं दातव्यो वृषभः सितः ॥४२॥**

शिल्पकारको हत्यामा रुक्षता ? रोग हुन्छ । यसैले त्यो पाप
शुद्ध पार्न सेतो साँढे दानमा दिनु पर्दछ ।

**सर्वकार्य्येष्वसिद्धार्थो गजघाती भवेन्नरः ।**
**प्रासादं कारयित्वा तु गणेशप्रतिमां न्यसेत् ॥४३॥**
**गणनाथस्य मन्त्रं तु मन्त्री लक्षमितं जपेत् ।**
**कुलत्थशाकैः पूपैश्च गणशान्तिपुरःसमम् ॥४४॥**

हात्ती मार्ने मानिस आफ्ना सबै कार्यमा निष्फल प्रयोजन भएको हुनेछ । उसले मन्दिर बनाई त्यसमा गणेशको प्रतिमा स्थापना गर्नू । गहतको साग तथा मालपूवाले पहिले गणशान्ति गराउनू अनि मन्त्रका ज्ञाताले गणेशको मन्त्र एक लाख जप गर्नू ।

**उष्ट्रे विनिहते चैव जायते विकृतस्वरः ।**
**स तत्पापविशुद्ध्यर्थं दद्यात् कर्पूरकं फलम् ॥४५॥**

ऊँट मारे मानिस विकृत स्वरको भएर जन्मन्छ । उसले त्यो पाप
छुटाउन कपूरको फल दान गर्नू ।

**अश्वे विनिहते चैव वक्रतुण्डः प्रजायते ।**
**शतं पलानि दद्याच्च चन्दनान्यघनुत्तये ॥४६॥**

घोडा मारे मानिस टेढो मुख भएर जन्मन्छ । उसले त्यो पाप धुन सय पला चन्दन दान गर्नू ।

**महिषीघातने चैव कृष्णगुल्मः प्रजायते ।**
**खरे विनिहते चैव खररोमा प्रजायते ॥**
**निष्कत्रयस्य प्रकृतिं सम्प्रदद्याद्धिरण्मयीम् ॥४७॥**

भैंसी मारे मानिस कृष्णगुल्म?को रोगी भएर जन्मन्छ । गधा मारे कडा रौं भएको
शरीर भएर जन्मन्छ । उसले तीन निष्क सुनको प्रतिमा दान गर्नू ।

**तरक्षौ निहते चैव जायते केकरेक्षणः ।**
**दद्याद्रत्नमयीं धेनुं स तत्पातकशान्तये ॥४८॥**

ब्वाँसो मारे मानिस डेरो भएर जन्मन्छ । उसले त्यो पापको
शान्तिका लागि रत्नले बनेको गाई दान गर्नू ।

**शूकरे निहते चैव दन्तुरो जायते नरः ।**
**स दद्यात्तु विशुद्ध्यर्थं घृतकुम्भं सदक्षिणम् ॥४९॥**

सुँगुर मारे मानिस लामा र टेढा दाँत भएर जन्मन्छ । उसले त्यो पापको शुद्धिका लागि
दक्षिणाका साथमा घिउले भरिएको घडा दान गर्नू ।

**हरिणे निहते खञ्ज श्रृगाले तु विपादकः ।**
**अश्वस्तेन प्रदातव्यः सौवर्णपलनिर्मितः ॥५०॥**

हरिण मारे मानिस लङ्गडो र स्याल मारे गोडाहीन भएर  जन्मन्छ । यस्ता मानिसले
एक पल सुनले बनेको घोडा दान गर्नू ।

**अजाभिघातने चैव अधिकाङ्ग प्रजायते ।**
**अजा तेन प्रदातव्या विचित्रवस्त्रसंयुता ॥५१॥**

बाख्री मारे मानिस धेरै अङ्गको भएर जन्मन्छ । यस्ताले रङ्गीबिरङ्गी कपडा सहितको बाख्री दान गर्नू ।

**उरभ्रे निहते चैव पाण्डुरोगः प्रजायते ।**
**कस्तूरिकापलं दद्याद् ब्राह्मणाय विशुद्धये ॥५२॥**

भेडा मारे मानिस पाण्डुरोगी भएर जन्मन्छ । उसको पापको शुद्धिका लागि एक पल कस्तूरी ब्राह्मणलाई दानमा दिनु पर्दछ ।

**मार्जारे निहते चैव पीतपाणिः प्रजायते ।**
**पारावतं स सौवर्णं पैदद्यान्निष्कमात्रकम् ॥५३॥**

बिरालो मारे मानिस पहेँलो हात लिएर जन्मन्छ । उसले एक निष्क सुनले बनेको परेबा दान गर्नू ।

**शुकशारिकयोर्घाते नरः स्खलितवाग्भवेत् ।**
**सच्छास्त्र पुस्तकं दद्यात् स विप्राय सदक्षिणम् ॥५४॥**

सुँगा र मैना मारे मानिस लरखराउने बोलि लिएर जन्मन्छ । उसले ब्राह्मणलाई दक्षिणाका साथमा उत्तम शास्त्रग्रन्थ दानमा दिनू ।

**वकघाती दीर्घनसो दद्याद् गां धवलप्रभाम् ।**
**काकघाती कर्णहीनो दद्याद् गामसितप्रभाम् ॥५५॥**

बकुल्ला मार्ने लामो नाक भएको हुन्छ । उसले सेतो गाई दान गर्नू । काग मार्ने कानहीन हुन्छ उसले कालो गाई दान गर्नू ।

**हिंसायां निष्कृतिरियं ब्राह्मणे समुदाहृता ।**
**तदर्द्धार्द्धप्रमाणेन क्षत्त्रियादिष्वनुक्रमात् ॥५६॥**

हत्याहिंसामा ब्राह्मणका लायि यही नै प्रायश्चितको विधि बताइएको छ,

क्षत्रिय आदिका लागि क्रमशः आधा विधि गर्नुपर्दछ भनी जान्नू ।

॥ इति शातातपीये धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको
दोश्रो अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-३१+५६=८७
शुरुदेखिको श्लोक सङ्ख्या : ८७



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)

**सुरापः श्यावदन्तः स्यात् प्राजापत्यन्तरन्तथा ।**
**शर्करायास्तुलाः सप्त दद्यात् पापविशुद्धये ॥१॥**

सुरापेयी अर्को जन्ममा कलदन्ते हुन्छ । उसले शुद्धि गर्न प्राजापत्य
व्रत पछि सात तुला (सात सय पल) सखर दान गर्नू ।

**जपित्वा तु महारुद्रं दशांशं जुहुयात्तिलैः ।**
**ततोऽभिषेकः कर्त्तव्यो मन्त्रैर्वरुणदैवतैः ॥२॥**

महारुद्रको जप गरी तिलले दशांश होम गर्नू । त्यसपछि वरुण देवताका मन्त्रले नुहाउनू ।

**मद्यपो रक्तपित्ती स्यात्स दद्यात् सर्पिषो घटम् ।**
**मधुनोऽर्द्धघटश्चैव सहिरण्यं विशुद्धये ॥३॥**

मद्यपेयी रक्तपित्ते[१] हुन्छ । उसले शुद्धताका लागि घिउले भरिएको घडा दान गर्नू वा
सुनका साथ महको आधा घडा दान गर्नू । *(१.मुख र नाकबाट रगत बग्ने रोग)*

**अभक्ष्यभक्षणे चैव जायते कृमिकोदरः ।**
**तथावत्तेन शुद्ध्यर्थमुपोष्यं भीष्मपञ्चकम् ॥४॥**

खान नहुने कुरा खाँदा पेटमा कीरा सहित जन्मन्छ । उसले शुद्धिका लागि

भीष्मपञ्चक[२]मा शास्त्रोक्त विधिले उपवास बस्नू । *(२. कार्तिक शुक्ल एकादशी देखि पूर्णिमासम्म ।)*

**उदक्यावीक्षितं भुक्त्वा जायते कृमिलोदरः ।**
**गोमूत्रयावकाहार-स्त्रिरात्रेणैव शुध्यति ॥५॥**

रजस्वलाले देखेको अन्न खाए पेटमा कीरा सहित जन्मन्छ । उ गहुँत र
जौको आहारा लिई तीन दिनमा शुद्ध हुन्छ ।

**भुक्त्वा चास्पृश्यसंस्पृष्टं जायते कृमिलोदरः ।**
**त्रिरात्रं समुपोष्याथ स तत्पापात् प्रमुच्यते ॥६॥**

छुन नहुनेले छोएको भोजन खाए पेटमा कीरा सहित जन्मन्छ । तीन रातसम्म
उपवास बसी उ त्यो पापबाट छुट्द्छ ।

**परान्नविघ्नकरणा- दजीर्णमभिजायते ।**
**लक्षहोमं स कुर्वीत प्रायश्चित्तं यथाविधि ॥७॥**

अर्काको भोजनमा वाधा गर्ने मानिस अजीर्णको रोगी हुन्छ । उसले लक्षहोम
नामको प्रायश्चितलाई विधिपूर्वक गर्नू ।

**मन्दोदराग्निर्भवति सति द्रव्ये कदन्नदः ।**
**प्राजापत्यत्रयं कुर्य्याद्भोजयेच्च शतं द्विजान् ॥८॥**

द्रव्य हुँदाहुँदै पनि निम्नस्तरको भोजन दिनेको पेटको अग्नि मन्द हुन्छ ।
उसले प्राजापत्य व्रत र सय ब्राह्मणलाई भोजन खुवाउनू ।

**विषदः स्याच्छर्दिरोगी दद्याद्दश पयस्विनीः ।**
**मार्गहा पादरोगी स्यात् सोऽश्वदानं समाचरेत् ॥९॥**

विष दिने वमनको रोगी हुन्छ । उसले लैनु गाईहरु दान गर्नू । बाटो
नष्ट गर्ने गोडाको रोगी हुन्छ । उसले घोडा दान गर्नू ।

**पिशुनो नरकस्यान्ते जायते श्वासकासवान् ।**
**घृतं तेन प्रदातव्यं सहस्रपलसम्मितम् ॥१०॥**

चुगलीखोर नरक भोगेपछि श्वास र खोकीको रोगी हुन्छ । उसले
एक हजार पल घिउ दान गर्नु पर्दछ ।

**धूर्त्तोऽपस्माररोगी स्यात् स तत्पापविशुद्धये ।**
**ब्रह्मकूर्चमयीं धेनुं दद्याद् गाञ्च सदक्षिणाम् ॥११॥**

धूर्त छारेरोगी? हुन्छ । उसले यो पापको शुद्धिका लागि ब्रह्मकूर्चले
बनेको गाई र दक्षिणा सहित गाई दान गर्नू ।

**शूली परोपतापेन जायते तत्प्रमोचने ।**
**सोऽन्नदानं प्रकुर्वीत तथा रुद्रं जपेन्नरः ॥१२॥**

अर्कालाई कष्ट दिने मानिस शूलको रोगी हुन्छ । उसले त्यसबाट
छुट्न भोजन दान गर्नु र रुद्रको जप गर्नू ।

**दावाग्निदायकश्चैव सक्तातिसारवान् भवेत् ।**
**तेनोदपानं कर्त्तव्यं रोपणीयस्तथा वटः ॥१३॥**

बनमा आगो लगाउने मानिस रक्तातिसारको रोगी हुन्छ । उसले
कुवा बनाउन लगाउनू र वरको रुख रोप्नू ।

**सुरालये जले वापि शकृन्मूत्रं करोति यः ।**
**गुदरोगो भवेत्तस्य पापरूपः सुदारुणः ॥१४॥**

देवालय तथा जलमा जसले मलमूत्र त्याग गर्दछ उसलाई
पापरुपी डरलाग्दो चाकको रोग हुन जान्छ ।

**मांसं सुरार्च्चनेनैव गोदानद्वितयेन तु ।**
**प्राजापत्येन चैकेन शाम्यन्ति गुदजा रुजः ॥१५॥**

महिनाभरीको देवपूजाले, दुई वटा गाई दानले तथा एउटा
प्राजापत्य व्रतले गुदामा हुने रोग शान्त हुन्छ ।

**गर्भपातनजा रोगा यकृत्प्लीहजलोदराः ।**

**तेषां प्रशमनार्थाय प्रायश्चित्तमिदं स्मृतम् ॥१६॥**

कलेजोको रोग, फियोको रोग तथा जलोदर गर्भपात गराउनाले उत्पन्न हुने रोग हुन् । त्यसको शान्तिको लागि यो प्रायश्चित मानिएको छ ।

**एतेषु दद्याद्विप्राय जलधेनुं विधानतः ।**
**सुवर्णरूप्यताम्राणां पलत्रयसमन्विताम् ॥१७॥**

यी रोगमा ब्राह्मणलाई विधिपूर्वक तीन पल सुन, चाँदी वा तामाका साथमा जलधेनु दान दिनू ।

**प्रतिमाभङ्गकारी च अप्रतिष्ठः प्रजायते ।**
**संवत्सरत्रयं सिञ्चेदश्वत्थं प्रतिवासरम् ॥१८॥**

प्रतिमालाई भङ्ग गर्ने प्रतिष्ठाहीन भई जन्मन्छ । उसले तीन वर्षसम्म लगातार दिनहुँ पीपलमा पानी चढाउनू ।

**उद्वाहयेत्तमश्वत्थं स्वगृह्योक्तविधानतः ।**
**तत्र संस्थापयेद्देवं विघ्नराजं सुपूजितम् ॥१९॥**

आफ्नो कूल परम्परा अनुसार त्यो पीपलको विवाह गर्नू तथा त्यस मुनी सुपूजित देवता गणेशको स्थापना गर्नू ।

**दुष्टवादी खण्डितः स्यात् स वै दद्याद् द्विजातये ।**
**रूप्यं पलद्वयं दुग्धं घटद्वयसमन्वितम् ॥२०॥**

खराब कुरा बोल्ने मानिस खण्डित अङ्ग लिएर जन्मन्छ । उसले ब्राह्मणलाई दुई घडा दूधका साथमा दुई पल चाँदी दानमा दिनू ।

**खल्लीटः परनिन्दावान् धेनुं दद्यात् सकाञ्चनम् ।**
**परोपसासकृत् काणःस गां दद्यात् समौक्तिकाम् ॥२१॥**

परनिन्दक तालुखुइले हुन्छ उसले सुनसहित तथा अर्कालाई उपहास गर्ने कानो हुन्छ उसले मोतिसहित गाई दान गर्नू ।

सभायां पक्षपाती च जायते पक्षघातवान् ।
निष्कत्रयमितं हेम स दद्यात् सत्यवर्त्तिनाम् ॥२२॥

सभामा बसेर पक्षपात गर्ने पक्षाघातको रोगी भएर जन्मन्छ । उसले सत्यमा रहनेलाई तीन निष्क सुन दानमा दिनू ।

॥ इति शातातपीये धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको
तेश्रो अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥

आदितः श्लोकानां समष्टयङ्काः-८७+२२=१०९
शुरुदेखिको श्लोक सङ्ख्या : १०९

## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)

कुलघ्नो नरकस्यान्ते जायते विप्रहेमहृत् ।
स तु स्वर्णशतं दद्यात् कृत्वा चान्द्रायणत्रयम् ॥१॥

ब्राह्मणको सुन चोर्ने नरकको अन्तमा कुलघाती भई जन्मन्छ । उसले तीन चान्द्रायण व्रत गरी सय सुनका मुद्रा दान गर्नू ।

औदुम्बरी ताम्रचौरो नरकान्ते प्रजायते ।
प्राजापत्यं स कृत्वात्र ताम्रं पलशतं दिशेत् ॥२॥

तामा चोर्ने नरकको अन्तमा ताम्रकुष्ठी भएर जन्मन्छ । उसले प्राजापत्य व्रत गरी सय पल तामा दान गर्नू ।

कांस्यहारी च भवति पुण्डरीकसमन्वितः ।
कांस्यं पलशतं दद्यादलङ्कृत्य द्विजातये ॥३॥

काँस चोर्ने नरकको अन्तमा पुण्डरिककुष्ठी भएर जन्मन्छ । उसले ब्राह्मणलाई अलङ्कृत पारी उसलाई सय पल काँस दानमा दिनू ।

रीतिहृत् पिङ्गलाक्षः स्यादुपोष्य हरिवासरम् ।
रीतिं पलशतं दद्यादलङ्कृत्य द्विजं शुभम् ॥४॥

पित्तल चोर्ने कैला आँखे हुन्छ । उसले एकादशीमा उपवास बसी ब्राह्मणलाई अलङ्कृत पारी उसलाई सय पल पित्तल दानमा दिनू ।

मुक्ताहारी च पुरुषो जायते पिङ्गमूर्द्धजः ।
मुक्ताफलशतं दद्यादुपोष्य स विधानतः ॥५॥

मोति चोर्ने कैलो कपाल भएर जन्मन्छ । उसले विधिपूर्वक उपवास बसी सय मोति दान दिनू ।

त्रपुहारी घ पुरुषो जायते नेत्ररोगवान् ।
उपोष्य दिवसं सोऽपि दद्यात् पलशतन्त्रपु ॥६॥

टिन चोर्ने आँखाको रोगी भएर जन्मन्छ । उसले दिनभर उपवास बसी सय पल टिन दान दिनू ।

सीसहारी च पुरुषो जायते शीर्षरोगवान् ।
उपोष्य दिवसं दद्याद् घृतधेनुं विधानतः ॥७॥

सीसा चोर्ने टाउकाको रोगसहित जन्मन्छ । उसले दिनभर उपवास बसी घृत-धेनु दान दिनू ।

दुग्धहारी च पुरुषो जायते बहुमूत्रकः ।
स दद्याद् दुग्धधेनुञ्च ब्राह्मणाय यथाविधि ॥८॥

दूध चोर्ने पुरुष बहुमूत्रको रोगी भएर जन्मन्छ । उसले विधिपूर्वक ब्राह्मणलाई दुग्धधेनु दान दिनू ।

दधिचौर्य्येण पुरुषो जायते मेदवान् यतः ।
दधिधेनुः प्रदातव्या तेन विप्राय शुद्धये ॥९॥

दही चोर्ने पुरुष बोसोको रोगी भएर जन्मने हुनाले उसले पापका शुद्धिका लागि ब्राह्मणलाई दधिधेनु दान दिनू ।

**मधुचौरस्तु पुरुषो जायते नेत्ररोगवान् ।**
**स दद्यान्मनुधेनुञ्च समुपोष्य द्विजातये ॥१०॥**

मह चोर्ने पुरुष आँखाको रोगी भएर जन्मन्छ । उसले उपवास बसी ब्राह्मणलाई मधुधेनु दान दिनू ।

**इक्षोर्विकारहारी च भवेदुदरगुल्मवान् ।**
**गुडधेनुः प्रदातव्या तेन तद्दोषशान्तये ॥११॥**

ऊखुको रस, सखर आदि चोर्ने पुरुष पेटको गुल्मरोगी भएर जन्मन्छ । त्यो दोष शान्त पार्न उसले सखरको गाई दान गर्नु पर्दछ ।

**लोहहारी च पुरुषः कर्बूराङ्गः प्रजायते ।**
**लोहं पलशतं दद्यादुपोष्य स तु वासरम् ॥१२॥**

फलाम चोर्ने पुरुष पेटको कर्बूर (चित्रविचित्र) रङ्को भएर जन्मन्छ । उसले दिनभर नखाई सय पल फलाम दान गर्नू ।

**तैलचौरस्तु पुरुषो भवेत् कण्ड्वादिपीडितः ।**
**उपोष्य स तु विप्राय दद्यात्तैलघटद्वयम् ॥१३॥**

तेल चोर्ने पुरुष दाद, लुतो आदिबाट पीडित हुन्छ । उसले उपवास बसी ब्राह्मणलाई तेलका दुई घडा दान गर्नू ।

**आमान्नहरणाच्चैव दन्तहीनः प्रजायते ।**
**स दद्यादश्विनौ हेमनिष्कद्वयविनिर्मितौ ॥१४॥**

काँचो अन्न चोर्ने दाँतहीन भएर जन्मन्छ । उसले दुई निष्क सुनले बनेको घोडा दान गर्नू ।

**पक्वान्नहरणाच्चैव जिह्वारोगः प्रजायते ।**
**गायत्र्याः स जपेल्लक्षं दशांशं जुहुयात्तिलैः ॥१५॥**

पकाइएको अन्न चोर्ने जिब्रोको रोगी भएर जन्मन्छ । उसले एक लाख गायत्री जप गर्नू र तिलले दशांश होम गर्नू ।

**फलहारी च पुरुषो जायते व्रणिताङ्गुलिः ।**
**नाफलानामयुतं स दद्याच्च द्विजन्मने ॥१६॥**

फल चोर्ने मानिसको औंलामा घाउ हुन्छ । उसले ब्राह्मणलाई
अनेक प्रकारका दस हजार फलहरु दानमा दिनू ।

**ताम्वूलहरणाच्चैव श्वेतौष्ठः सम्प्रजायते ।**
**सदक्षिणं प्रदद्याच्च विद्रुमस्य द्वयं वरम् ॥१७॥**

पान चोर्ने मानिस सेतो ओठ लिएर जन्मन्छ । उसले दक्षिणाका साथमा
दुईटा उत्तम मूगा ब्राह्मणलाई दानमा दिनू ।

**शाकहारी च पुरुषो जातते नीललोचनः ।**
**ब्राह्मणाय प्रदद्याद्वै महानीलमणिद्वयम् ॥१८॥**

सागपात चोर्ने मानिस नीलो आँखा लिएर जन्मन्छ । उसले
ब्राह्मणलाई महानील मणिहरु दिनू ।

**कन्दमूलस्य हरणाद्ध्रस्वपाणिः प्रजायते ।**
**देवतायतनं कार्य्यमुद्यानं तेन शक्तितः ॥१९॥**

कन्दमूल चोर्ने मानिस छोटा हात लिएर जन्मन्छ । उसले
गच्छे अनुसार देवमन्दिर र बगैंचा बनाउनू ।

**सौगन्धिकस्य हरणाद् दुर्गन्धाङ्गः प्रजायते ।**
**स लक्षमेकं पद्मानां जुहुयाज्जातवेदसि ॥२०॥**

सुगन्ध चोर्ने मानिस दुर्गन्धित अङ्ग लिएर जन्मन्छ । उसले
अग्निमा एक लाख कमल होम गर्नू ।

**दारुहारी च पुरुषः स्विन्नपाणिः प्रजायते ।**
**स दद्याद्विदुषे शुद्धौ काश्मीरजपलद्वयम् ॥२१॥**

काठ चोर्ने मानिस पसिना आउने हात लिएर जन्मन्छ । उसले शुद्धिका लागि विद्वान ब्राह्मणलाई दुई पल केसर दान गर्नू ।

**विद्यापुस्तकहारी च किल मूकः प्रजायते ।**
**न्यायेतिहासं दद्यात् स ब्राह्मणाय सदक्षिणाम् ॥२२॥**

विद्या र पुस्तक चोर्ने मानिस निश्चितरुपले लाटो भएर जन्मन्छ । उसले दक्षिणाका साथमा ब्राह्मणलाई न्याय र इतिहास ग्रन्थ दान गर्नू ।

**वस्त्रहारी भवेत् कुष्ठी सम्प्रदद्यात्प्रजापतिम् ।**
**हेमनिष्कमितञ्चैव वस्त्रयुग्मं द्विजातये ॥२३॥**

कपडा चोर्ने मानिस कुष्ठरोगी भएर जन्मन्छ । उसले एक निष्क सुनले बनेको प्रजापतिको मूर्ति र एक जोर कपडा ब्राह्मणलाई दान दिनू ।

**ऊर्णाहारी लोमशः स्यात् स दद्यात् कम्बलान्वितम् ।**
**स्वर्णनिष्कमितं हेम वह्निं दद्याद् द्विजातये ॥२४॥**

ऊन चोर्ने मानिस लामालामा रौं लिएर जन्मन्छ । उसले कम्बल सहित एक निष्क सुनले बनेको अग्निको सुनको प्रतिमा ब्राह्मणलाई दान दिनू ।

**पट्टसूत्रस्य हरणान्निर्लोमा जायते नरः ।**
**तेन धेनुः प्रदातव्या विशुद्ध्यर्थं द्विजन्मने ॥२५॥**

रेसमको धागो चोर्ने मानिस बिना रौं लिएर जन्मन्छ । उसले आफ्नो पाप शुद्धिका लागि ब्राह्मणलाई गाई दान दिनू ।

**औषधस्यापहरणे सूर्य्यावर्तः प्रजायते ।**
**सूर्य्यायार्घः प्रदातव्यो माषं देयञ्च काञ्चनम् ॥२६॥**

औषधी चोर्ने मानिस सूर्यको गतिसँगै बढ्ने र घट्ने टाउको दुख्ने रोगी भएर जन्मन्छ । उसले सूर्यलाई अर्घ्य दिनु र एक माषा सुन दान गर्नू ।

**रक्तवस्त्रप्रवालादिहारी स्याद्रक्तवातवान् ।**

**सवस्त्रां महिषीं दद्यान्मणिरागसमन्विताम् ॥२७॥**

रातो कपडा र मूगा आदि चोर्ने मानिस रक्तवातको रोगी हुन्छ । उसले मणिरागका साथमा वस्त्रले ढाकेको भैंसी दान गर्नू ।

**विप्ररत्नापहारी चाप्यनपत्यः प्रजायते ।**
**तेन कार्य्यं विशुद्ध्यर्थं महारुद्रजपादिकम् ॥२८॥**

ब्राह्मणको रत्न चोर्ने मानिस सन्तानहीन जन्मन्छ । उसले आफ्नो पापको शुद्धिको लागि महारुद्र जप आदि कर्म गर्नु पर्दछ ।

**मृतवत्सोदितः सर्वो विधिरत्र विधीयते ।**
**दशांशहोमः कर्तव्यः पलाशेन यथाविधि ॥२९॥**

मृतवत्साका लागि जो विधि छ त्यो सबैका सबै सन्तानहीनका लागि पनि हो । पलाँशका समिधाले विधिपूर्वक दशांश होम गर्नू ।

**देवस्य हरणाच्चैव जायते विविधो ज्वरः ।**
**ज्वरो महाज्वरश्चैव रौद्रो वैष्णव एव च ॥३०॥**
**ज्वरे रौद्रं जपेत् कर्णे महारुद्रं महाज्वरे ।**
**अतिरौद्रं जपेद्रौद्रे वैष्णवे तदद्वयं जपेत् ॥३१॥**

देवताको चोरी गर्नाले अनेक थरीका जरो आउँछ । जस्तै-जरो, महाज्वर, रौद्र ज्वर र वैष्णव ज्वर । जरो हुँदा कानमा रौद्र जप गर्नू । महाज्वर भए महारौद्र जप गर्नू । रौद्रज्वर भए अतिरौद्र जप गर्नू तथा वैष्णव ज्वर हुँदा महारौद्र र अतिरौद्र जप गर्नू ।

**नानाविधद्रव्यचौरो जायते ग्रहणीयुतः ।**
**तेनान्नोदकवस्त्राणि हेम देयञ्च शक्तितः ॥३२॥**

अनेक प्रकारका द्रव्य चोरी गर्ने मानिस ग्रहणी? रोगले ग्रस्त हुन्छ । उसले गच्छेअनुसार भोजन, जल, कपडा र सुन दान गर्नु पर्दछ ।

॥ इति शातातपीये धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको चौथो अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-१०९+३२=१४१
शुरुदेखिको श्लोक सङ्ख्या : १४१



## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)

**मातृगामी भवेद्यस्तु लिङ्गं तस्य विनश्यति ।**
**चाण्डालीगमने चैव हीनकोषः प्रजायते ॥१॥**

मातृगमन गर्नेको जननेन्द्रिय नष्ट हुन्छ । चाण्डाल्नी गमन गर्दा अण्डकोष नभई जन्मन्छ ।

**तस्य प्रतिक्रियां कर्त्तुं कुम्भमुत्तरतो न्यसेत् ।**
**कृष्णवस्त्रसमाच्छन्नं कृष्णमाल्यविभूषितम् ॥२॥**

त्यसबाट निकास पाउन कालो कपडाले ढाकेको र कालो मालाले
विभूषित घडालाई उत्तरतिर स्थापना गर्नू ।

**तस्योपरि न्यसेद्देवं कांस्यपात्रे धनेश्वरम् ।**
**सुवर्णनिष्कषट्केन निर्मितं नरवाहनम् ॥३॥**

त्यसमाथि पाँच निष्क सुनले बनेको मानिसमाथि सवार गर्ने
कुबेर देवतालाई काँसको भाँडामा राख्नू ।

**यजेत् पुरुषसूक्तेन धनदं विश्वरूपिणम् ।**
**अथर्ववेदविद्विप्रो ह्याथर्वणं समाचरेत् ॥४॥**

पुरुषसूक्तले विश्वरुपी कुबेरको पूजा गर्नू । अथर्ववेद जानेका ब्राह्मणले अथर्ववेदको पाठ गर्नू ।

**सुवर्णपुत्रिकां कृत्वा निष्कविंशतिसङ्ख्यया ।**
**दद्याद्विप्राय सम्पूज्य निष्पापोहमिति ब्रुवन् ॥५॥**

पुरुषसूक्तले विश्वरुपी कुबेरको पूजा गर्नू । अथर्ववेद जानेका ब्राह्मणले अथर्ववेदको पाठ गर्नू ।

**निधीनामधिपो देवः शङ्करस्य प्रियः सखा ।**
**सौम्याशाधिपतिः श्रीमान् मम पापं व्यपोहतु ॥६॥**
**इमं मन्त्रं समुच्चार्य्य आचार्य्याय यथाविधि ।**
**दद्याद्देवं हीनकोषे लिङ्गनाशे विशुद्धये ॥७॥**

“निधिका स्वामी, शङ्करका प्रिय सखा, सोमका दिशाका मालिक, श्रीमान्, देव कुबेर मेरा पापलाई नाश गर”–यो मन्त्र भन्दै हीनकोष तथा लिङ्गनाशका विषयमा शुद्धिका लागि प्रतिमा विधिपूर्वक आचार्यलाई दिनू ।

**गुरुजायाभिगमनान्मूत्रकृच्छ्रः प्रजायते ।**
**तेनापि निष्कृतिः कार्य्या शास्त्रदृष्टेन कर्मणा ॥८॥**

गुरुपत्नी गमन गरे मूत्रकृच्छ्र रोगी भएर जन्मन्छ । उसले पनि शास्त्रले बताएको कर्म गरी पश्चाताप गर्नु पर्दछ ।

**स्थापयेत् कुम्भमेकन्तु पश्चिमायां शुभे दिने ।**
**नीलवस्त्रसमाच्छन्नं नीलमाल्यविभूषितम् ॥९॥**

उसले कुनै शुभ दिन नीलो कपडाले ढाकिएको र नीलो मालाले विभूषित एउटा घडालाई पश्चिममा स्थापना गर्नू ।

**तस्योपरि न्यसेद्देवं ताम्रपात्रे प्रचेतसम् ।**
**सुवर्णनिष्कषट्केन निर्मितं यादसाम्पतिम् ॥१०॥**

त्यसमाथि छ निष्क सुनले बनेको जलजन्तुका स्वामी देवता वरुणको (प्रतिमालाई) तामाको भाँडामा राख्नू ।

**यजेत् पुरुषसूक्तेन वरुणं विश्वरूपिणम् ।**
**सानविद् ब्राह्मणास्तत्र सामवेदं समाचरेत् ॥११॥**

पुरुष सूक्तले विश्वरुपी वरुणको पूजा गर्नू र सामवेद जान्ने ब्राह्मणहरुले सामवेद पढ्नू ।

**सुवर्णपुत्रिकां कृत्वा निष्कविंशतिसङ्ख्यया ।**

**दद्याद्विप्राय सम्पूज्य निष्पापोऽहमिति ब्रुवन् ॥१२॥**

बीस निष्क सुनको प्रतिमा बनाई त्यसलाई पूजा गरेर “म पापबाट छुटेँ”
भन्दै त्यो ब्राह्मणलाई दिनू ।

**यादसामधिपो देवो विश्वेषामपि पावनः ।**
**संसाराब्धौ कर्णधारो वरुणा पावनोऽस्तु मे ॥१३॥**
**इमं मन्त्रं समुच्चार्य्य आचार्य्याय यथाविधि ।**
**दद्याद्देवमलङ्कृत्य मूत्रकृच्छ्रपशान्तये ॥१४॥**

जलजन्तुका स्वामी, संसारसागरमा कर्णधारभूत, सबैलाई पवित्र गर्ने भएका देवता वरुण
मलाई पवित्र पारुन्-यो मन्त्र उच्चारण गरी वरुणलाई अलङ्कृत पारी
मूत्रकृच्छ्रको शान्तिको लागि विधि अनुसार आचार्यलाई दिनू ।

**स्वसुतागमने चैव रक्तकुष्ठं प्रजायते ।**
**भगिनीगमने चैव पीतकुष्ठं प्रजायते ॥१५॥**

आफ्नी छोरी गमन गरेमा रक्तकुष्ठ उत्पन्न हुन्छ तथा दीदिबहिनीका साथ
सम्बन्ध राखे पीतकुष्ठ हुन्छ ।

**तस्य प्रतिक्रियां कर्त्तुं पूर्वतः कलशं न्यसेत् ।**
**पीतवस्त्रसमाछन्नं पीतमाल्यविभूषितम् ॥१६॥**

त्यसको प्रतिकारका लागि पहेँलो कपडाले ढाकेको र पहेँलो
मालाले विभूषित कलशलाई पूर्व दिशामा स्थापना गर्नू ।

**तस्योपरि न्यसेत् स्वर्णपात्रे देवं सुरेश्वरम् ।**
**सुवर्णनिष्कषट्केन निर्मितं वज्रधारिणम् ॥१७॥**

त्यसमाथि छ निष्क सुनको बज्रधारण गर्ने इन्द्र देवताको (प्रतिमालाई) सुनको भाँडामा राख्नू ।

**यजेत् पुरुषसूक्तेन वासवं विश्वरूपिणम् ।**
**यजुर्वेदं तत्र साम ऋग्वेदञ्च समाचरेत् ॥१८॥**

पुरुषसूक्तले विश्वरुपी इन्द्रको पूजा गर्नू र यजुर्वेद, सामवेद र ऋग्वेदको पाठ गराउनू ।

**सुवर्णपुत्रिकां कृत्या सुवर्णदशकेन तु ।**
**दद्याद्विप्राय सम्पूज्य निष्पापोऽहमिति ब्रुवन् ॥१९॥**

दश सुन (परिमाण ?) ले सुनको प्रतिमा बनाई पूजा गरेर
"म पापबाट मुक्त भएँ" भन्दै त्यो ब्राह्मणलाई दिनू ।

**देवानामधिपो देवो वज्री विष्णुनिकेतनः ।**
**शतयज्ञः सहस्राक्षः पापं मम निकृन्ततु ॥२०॥**
**इमं मन्त्रं समुच्चार्य्य आचार्य्याय यथाविधि ।**
**दद्याद्देवं सहस्राक्षं स्वपापस्यापनुत्तये ॥२१॥**

"देवताका मालिक, सय यज्ञवाला, सय आँखा भएका, विष्णुका निवासक वज्र लिने देवता इन्द्र
मेरो पापलाई काटुन्"-यो मन्त्र पढ्दै इन्द्रलाई (प्रतिमा) आफ्नो पापको
निवारणका लागि विधि अनुसार आचार्यलाई दिनू ।

**भ्रातृभार्य्याभिगमनाद् गलत्कुष्ठं प्रजायते ।**
**स्ववधूगमने चैव कृष्णकुष्ठं प्रजायते ॥२२॥**

पूर्वजन्ममा भाईबुहारी गमन गरे बग्ने कुष्ठ रोग हुन्छ । पूर्वजन्ममा
छोराबुहारी गमन गरे कालो कुष्ठ रोग हुन्छ ।

**तेन कार्य्यं विशुद्ध्यर्थं प्रागुक्तस्यार्द्धमेव हि ।**
**दशांशहोमः सर्वत्र घृताक्तैः क्रियते तिलैः ॥२३॥**

उसले शुद्धिका लागि उक्त अनुष्ठानको (पुत्री गमन) आधा गर्नू ।
सबै स्थितिमा घिउले भिजेका तिलले दशांश होम गरिन्छ ।

**यदगम्याभिगमनाज्जायते ध्रुवमण्डलम् ।**
**कृत्वा लोहमयीं धेनुं पलषष्टिप्रमाणतः ॥२४॥**
**कार्पासभाण्डसंयुक्तां कांस्यदोहां सवत्सिकाम् ।**
**दद्याद्विप्राय विधिवदिमं मन्त्रमुदीरयेत् ॥**
**सुरभिर्वैष्णवी माता मम पापं व्यपोहतु ॥२५॥**

अगम्या गमनले हुने ध्रुवमण्डल नामको रोगको पापको प्रायश्चितका लागि साठी पलको फलामको गाई बनाएर कपासको भाँडो, काँसको दुहुने तथा फलामको बाच्छो भएको त्यस गाईलाई विधि अनुसार ब्राह्मणलाई दिनु र यो मन्त्रको उच्चारण गर्नू-
"विष्णुकी पुत्री माता सुरभि मेरो पापलाई हटाइ दिनुहोस्" ।

**मातुः स पत्नी सङ्गमने जायते चाश्मरीगदः ।**
**स तु पापविशुद्ध्यर्थं प्रायश्चित्तं समाचरेत्॥२६॥**

सौतेनी मातालाई गमन गरे पत्थरीको रोग उत्पन्न हुन्छ । उसले त्यस पापको शुद्धिका लागि प्रायश्चित गर्नू ।

**दद्याद्विप्राय विदुषे मधुधेनुं यथोदितम् ।**
**तिलद्रोणशतञ्चैव हिरण्येन समन्वितम्॥२७॥**

विद्वान ब्राह्मणलाई शास्त्रको विधि अनुसार महको गाई दान दिनू तथा सुन सहित सय द्रोण तिल दान गर्नू ।

**पितृष्वस्रभिगमनाद्दक्षिणां सव्रणी भवेत् ।**
**तेनापि लिष्कृतिः वार्य्या अजादानेन शक्तितः॥२८॥**

फुपू गमनले मानिस दाहिने काँधमा फोको भएको हुनेछ । उसले शक्ति अनुसार बोका दानबाट त्यसको प्रायश्चित गर्नु पर्दछ ।

**मातुलान्यान्तु गमने पृष्ठकुब्जः प्रजायते ।**
**कृष्णाजिनप्रदानेन प्रायश्चित्तं समाचरेत्॥२९॥**

माइजू गमन गर्दा कुप्रो हुन्छ । कालो मृगको छाला दान गरी त्यसको प्रायश्चित गर्नू ।

**मातृस्वस्रभिगमने वामाङ्गे व्रणवान् भवेत् ।**
**तेनापि निष्कृतिः कार्य्या सम्यग्दानप्रदानतः॥३०॥**

आमाकी बहिनी गमन गर्दा मानिसको शरीरको देब्रे अङ्गमा फोका हुन्छ । उसले राम्ररी दान दिई त्यसको प्रतिकार गर्नू ।

**मृतभार्य्याभिगमने मृतभार्य्यः प्रजायते ।**
**तत्पातक विशुद्ध्यर्थं द्विजमेकं विवाहयेत् ॥३१॥**

मृत पत्नी गमनले अर्को जन्ममा पत्नी मर्दछे । त्यो पापशुद्धिका
लागि उसले एउटा ब्राह्मणको विवाह गराउनु पर्दछ ।

**सगोत्रस्त्रीप्रसङ्केन जायते च भगन्दरः ।**
**तेनापि निष्कृतिः कार्य्या महिषीदानयत्नतः ॥३२॥**

सगोत्री स्त्रीलाई गमन गरे भगन्दरको रोगी हुन्छ । यत्नपूर्वक भैँसी दान गरी
उसले त्यो पापबाट छुटकारा पाउनू ।

**तपस्विनीप्रसङ्गेन प्रमेही जायते नरः ।**
**मासं रुद्रजपः कार्य्यो दद्याच्छक्त्या च काञ्चनम् ॥३३॥**

तपस्विनी गमनले मानिस प्रमेहको रोगी हुन्छ । त्यसको प्रायश्चित गर्नका
लागि एक महिना रुद्रको जप गर्नू र सकेको सुन दान गर्नू ।

**दीक्षितस्त्रीप्रसंगेन जायते दुष्टरक्तदृक् ।**
**स पातकविशुद्ध्यर्थं प्राजापत्यद्वयञ्चरेत् ॥३४॥**

दीक्षा ग्रहण गर्ने स्त्री गमन गरे खराब रगतले युक्त आँखा भएको हुन्छ ।
त्यो पापको शुद्धिका लागि दुई वटा प्राजापत्य व्रत गर्नू ।

**स्वजातिजायागमने जायते हृदयव्रणी ।**
**तत्पापस्य विशुद्ध्यर्थं प्राजापत्यद्वयञ्चरेत् ॥३५॥**

आफ्नै जातकी स्त्रीलाई गमन गरे मानिस हृदयमा फोका भएको हुन्छ ।
त्यो पापशुद्धिका लागि दुई वटा प्राजापत्य व्रत गर्नू ।

**पशुयोनौ च गमने मूत्राघातः प्रजायते ।**
**तिलपात्रद्वयञ्चैव दद्यादात्मविशुद्धये ॥३६॥**

पशु गमन गरे मूत्राघात रोग उत्पन्न हुन्छ । मानिसले आफ्नो शुद्धिका

लागि दुई भाँडा तिल दान गर्नू ।

**अश्वयोनौ च गमनाद्गुदस्तम्भः प्रजायते ।**
**सहस्रकमलस्नानं मासं कुर्य्यात् शिवस्य च ॥३७॥**

घोडीको योनीमा गमन गरे गुदस्तम्भ रोग उत्पन्न हुन्छ । उसले एक महिनासम्म एक हजार कमलले शिवलाई स्नान गराउनू ।

**एते दोषा नराणां स्युर्नरकान्ते न संशयः ।**
**स्त्रीणामपि भवन्त्येते तत्तत्पुरुषसङ्गमात् ॥३८॥**

नरक भोगेर जन्मँदा यी दोष पुरुषमा उत्पन्न हुन्छन्, शङ्का छैन । यी दोष ती पुरुषसँग सम्भोग गर्नाले स्त्रीमा पनि उत्पन्न हुन्छ ।

॥ इति शातातपीये धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको
पाँचौं अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-१४१+३८=१७९
शुरुदेखिको श्लोक सङ्ख्या : १७९



## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)

**अश्वशूकरशृङ्ग्याद्रिद्रुमादिशकटेन च ।**
**भृग्वग्निदारुशस्त्राश्मविषोद्बन्धनजैर्मृताः ॥१॥**
**व्याघ्राहिगजभूपालचौरवैरिवृकाहताः ।**
**काष्ठशल्यमृता ये च शौचसंस्कारवर्जिताः ॥२॥**
**विषूचिकान्नकवलदवाती सार तो मृताः ।**
**शाकिन्यादिग्रहैर्ग्रस्ता विद्युत्पातहताश्च ये ॥३॥**
**अस्पृश्या ह्यपवित्राश्च पतिताः पुत्रवर्जिताः ।**
**पञ्चत्रिंशत्प्रकारैश्च नाप्नुवन्ति गतिं मृताः ॥४॥**

यी पैंतीस प्रकारले मरेका मानिस उत्तम गतिमा पुग्दैनन् । घोडा, सुँगुर, सिङ भएका पशु, पर्वत-वृक्ष-गाडी र अग्लो स्थानबाट खसेर, अग्नि-काठ-शस्त्र-पत्थर-विष र फाँसीबाट, बाघ-सर्प-हात्ती- राजा-चोर- शत्रु र ब्वाँसोबाट, काठ, किला आदिबाट, जो शौचहीन र संस्कारहीन छन्, हैजा-खाना अडकिएर र अतिसारले मर्ने, शाकिनी आदिले ग्रस्त तथा ग्रहले ग्रस्त, चटचाङ परेर मर्ने, अस्पृश्य, अपवित्र, पतित र पुत्रहीन ।

**पित्राद्याः पिण्डभाजः स्युस्त्रयो लेपभुजस्तथा ।**
**ततो नान्दीमुखाः प्रोक्तास्त्रयोस्त्रप्यश्रमुत्वास्त्रयः ॥५॥**

पिता आदि तीन पितृ पिण्डको र तीन पितृ लेपको भागी हुन्छन् ।
त्यसपछिका तीन पितृ नान्दीमुख र तीन अश्रुमुखी भनिन्छन् ।

**द्वादशैते पितृगणास्तर्पिताः सन्ततिप्रदाः ।**
**गतिहीनाः सुतादीनां सन्तति नाशयन्ति ते ॥६॥**

ती बाह्र पितृहरु तृप्त हुँदा सन्तान दिने हुन्छन् । यिनैले गतिले हीन
भएका पुत्र आदिका सन्तान नष्ट (समेत) पार्दछन् ।

**दश व्याघ्रादिनिहता गर्भं निघ्नन्त्यमी क्रमात् ।**
**द्वादशास्त्रादिनिहता आकर्षन्ति च बालकम् ॥७॥**

बाघ आदिले मारिने यी क्रमैले दश पितृले गर्भको नाश गरि दिन्छन् । तथा हतियारले
मारिएका बाह्र पितृ (गर्भस्थ) बालकलाई तानि दिन्छन् ।

**विषादिनिहता घ्नन्ति दशसु द्वादशस्वपि ।**
**वर्षैकबालकं कुर्य्यादनपत्योऽनपत्यताम् ॥८॥**

दश वा बाह्रको संख्यामा विष आदिबाट मारिएका यी पितृ एक वर्षको बालकलाई मार्दछन् ।
सन्तानहीन पितृ सन्तानहीनता उत्पन्न गराउँदछन् ।

**व्याघ्रेण हन्यते जन्तुः कुमारीगमनेन च ।**
**विषदश्चैव सर्पेण गजेन नृपदुःखकृत् ॥९॥**

कन्याका साथ गमन गर्नाले मानिस बाघद्वारा मारिन्छ । विष दिने सर्पबाट र

राजाको कुभलो गर्ने हात्तीबाट मारिन्छ ।

**राज्ञा राजकुमारघ्नश्चौरेण पशुहिंशकः ।**
**वैरिणा मित्रभेदी च वकवृत्तिर्वृकेण तु ॥१०॥**

राजकुमारको हत्यारा राजाबाट, पशुमार्ने चोरबाट, मित्रमा फूट लेराउने शत्रुबाट र ढोँगी ब्वाँसोबाट मारिन्छ ।

**गुरुघाती च शय्यायां मत्सरी शौचवर्जितः ।**
**द्रोही संस्काररहितः शुना निक्षेपहारकः ॥११॥**

गुरुसँग घातगर्ने ओछ्यानमा मर्दछ तथा अर्काको उन्नति नसहने, शौच नगर्ने, द्रोह गर्ने, संस्कारहीन र अर्काको नासो पचाउने कुकुरबाट मारिन्छ ।

**नरो विहन्यतेऽरण्ये शूकरेण च पाशिकः ।**
**कृमिभिः कृत्तवासाश्च कृमिणा च निकृन्तनः ॥१२॥**

बनमा पाशोले पशु समाउने मानिस सुँगुरबाट मारिन्छ भने जीवलाई काट्ने कीराले काटेको लुगा लाउने भई कीराबाटै मारिन्छ ।

**श्रृङ्गिणा शङ्करद्रोही शकटेन च सूचकः ।**
**भृगुणा मेदिनीचौरो वह्निना यज्ञहानिकृत् ॥१३॥**

शिवद्रोही सिङ भएका पशुबाट, चुगलीखोर गाडीबाट, भूमिचोर अग्लो ठाउँबाट खसाएर र यज्ञ विनाशक अग्निबाट मारिन्छ ।

**दवेन दक्षिणाचौरः शस्त्रेण श्रुतिनिन्दकः ।**
**अश्मना द्विजन्निदाकृद्विषेण कुमतिप्रदः ॥१४॥**

दक्षिणा चोर्ने बनको आगोबाट, वेदनिन्दक हतियारबाट, द्विजनिन्दक पत्थरबाट र कुमति दिने विषले मारिन्छ ।

**उद्‌बन्धनेन हिंस्रः स्यात् सेतुभेदी जलेन तु ।**
**द्रुमेण राजदन्तिहृदतीसारेण लौहहृत् ॥१५॥**

हिंसावृत्ति गर्ने फाँसीले, तलाउको बाँध भत्काउने पानीले, राजाको हात्ती
चोर्ने रुखले र फलाम चोर्ने अतीसार रोगले मारिन्छ ।

**शाकिन्याद्यैश्च म्रियते सदर्पकार्य्यकारकः ।**
**अनध्यायेऽप्यधीयानो म्रियते विद्युता तथा ॥१६॥**

घमण्डी कामगर्ने शाकिनी आदिबाट मारिन्छ । पढ्न नहुने बेला
अध्ययन गर्ने बिजुलीबाट मारिन्छ ।

**अस्पृश्यस्पर्शसङ्गी च वान्तमाश्रित्य शास्त्रहृत् ।**
**पतितो मदविक्रेतानपत्यो द्विजवस्त्रहृत् ॥१७॥**

छुन नहुने कुरा छुने र शास्त्र चोर्ने वमनका कारण मर्दछ, मद बेच्ने
पतित हुन्छ र ब्राह्मणको कपडा चोर्ने सन्तानहीन हुन्छ ।

**अथ तेषां क्रमेणैव प्रायश्चित्तं विधीयते ।**
**कारयेन्निष्कमात्रन्तु पुरुषं प्रेतरूपिणम् ॥१८॥**
**चतुर्भुजं दण्डहस्तं महिषासनसंस्थितम् ।**
**पिष्टैःकृष्णतिलैःकुर्य्यात् पिण्डं प्रस्थप्रमाणतः ॥१९॥**
**मध्वाज्यशर्करायुक्तं स्वर्णकुण्डलसंयुतम् ।**
**अकालमूलं कलशं पञ्चपय्ल्लवसंयुतम् ॥२०॥**
**कृष्णवस्त्रसमाच्छन्नं सर्वौषधिसमन्वितम् ।**
**तस्योपरिन्यसेदेवं पात्रं धान्यफलैर्युतम् ॥२१॥**
**सप्तधान्यन्तु सफलं तत्र तत् सफलं न्यसेत् ।**
**कुम्भोपरि च विन्यस्य पूजयेत् प्रेतरूपिणम् ॥२२॥**

यस पछि क्रमैले तिनको प्रायश्चितको विधान गरिन्छ । एक निष्क सुनले एक प्रेतरुपी पुरुष बनाउनू, जसका चार हात हुन्, जसका हातमा दण्ड होस् तथा जसले भैंसी माथि चढेको होस् । पिँधिएका काला तिलले एक प्रस्थ बराबरको पिण्ड बनाउनू, जसमा मह, घिउ र सखर मिसाइएको होस् तथा त्यो सुनको कुण्डलले युक्त होस् । यस्तो एउटा कलश लिनू जसको पिँध कालो नहोस्, जुन पञ्चपल्लवले युक्त होस्, कालो कपडाले ढाकिएको होस् तथा सबै थरीका जडीबूटीले भरिएको होस् । अनाज र फल सहितको पात्रलाई त्यसमाथि यसरी राख्नू कि त्यो अनाज सात थरीको अनाज तथा फलले युक्त होस् तथा त्यसलाई फलसहित त्यहाँ राख्न सकियोस् । यसरी त्यसलाई घडामाथि राखी प्रेतरुपी पुरुषको पूजा गर्नू ।

**कुर्य्यात् पुरुषसूक्तेन प्रत्यहं दुग्धतर्पणम् ।**
**षडङ्गञ्च जपेद्रुद्रं कलशे तत्र वेदवित् ॥२३॥**

दिनहुँ पुरुष सूक्तका मन्त्रले त्यसलाई दूधले तर्पण गर्नू तथा वेदका ज्ञाता ब्राह्मणले त्यस कलश माथि षडङ्ग रुद्रको जप गर्नू ।

**यमसूक्तेन कुर्वीत यमपूजादिकं तथा ।**
**गायत्र्याश्चैव कर्त्तव्यो जपः स्वात्मविशुद्धये ॥२४॥**

यमसूक्तले यमको पूजा गर्नू तथा आफ्नो शुद्धिका लागि गायत्रीको जप गर्नु पर्दछ ।

**ग्रहशान्तिकपूर्वञ्च दशांशं जुहुयात्तिलैः ।**
**अज्ञातनामगोत्राय प्रेताय सतिलोदकम् ॥**
**प्रदद्यात् पितृतीर्थेन पिण्डं मन्त्रमुदीरयेत् ॥२५॥**

ग्रहशान्ति पछि तिलले दशांश होम गर्नू । नाम र गोत्र थाहा नभएको प्रेतलाई तिल र जलका साथमा पितृतीर्थले पिण्ड दिनू तथा यो मन्त्र भन्नू ।

**इमं तिलमयं पिण्डं मधुसर्पिसमन्वितम् ।**
**ददामि तस्मै प्रेतायः य पीडां कुरुते मम ॥२६॥**

"मह तथा घिऊ मिसिएको तिलले बनेको यो पिण्डलाई म त्यो प्रेतलाई दिन्छु जसले मलाई पीडा दिइराखेको छ" ।

**सजलान् कृष्णकलशांस्तिलपात्रसमन्वितान् ।**
**द्वादश प्रेतमुद्दिश्य दद्यादेकञ्च विष्णवे ॥२७॥**

तिलको पात्रसहित जलले भरिएको काला वर्णका बाह्र घडालाई प्रेतका उद्देश्यले दिनू तथा एउटा विष्णुलाई पनि दिनू ।

**ततोऽभिषिञ्चेदाचार्य्यो दम्पती कलशोदकैः ।**
**शचिर्वरायुधधरो मन्त्रैर्वरुणदैवतैः ॥२८॥**

त्यसपछि पवित्र भएको, उत्तम शास्त्र धारण गर्ने आचार्यले वरुण
देवताको मन्त्रले कलशको जलले पति र पत्नीलाई जल छर्कनू ।

**यजमानस्ततोदद्यादाचार्य्याय स दक्षिणाम् ।**
**ततो नारायणवलिः कर्त्तव्यः शास्त्रनिश्चयात् ॥२९॥**

त्यसपछि त्यो जजमानले आचार्यलाई दक्षिणा दिनू । अनि शास्त्रको
निश्चयबाट (विधिपूर्वक) नारायण बलि दिनू ।

**एष साधारणविधिरगतीनामुदाहृतः ।**
**विशेषस्तु पुनर्ज्ञेयो व्याघ्रादिनिहतेष्वपि ॥३०॥**

यो गतिहीनका विषयमा साधारण विधि बताइयो । बाघ
आदिबाट मारिनेका विषयमा फेरी विशेषरूपले जान ।

**व्याघ्रेण निहते प्रेते परकन्यां विवाहयेत् ।**
**सर्पदंशे नागवलिर्देयः सर्वेषु काञ्चनम् ॥३१॥**

बाघले मारिनेको शान्तिका लागि परपुरुषको कन्याको विवाह गर्दिनू, सर्पले डसेर मरे
नागलाई बलि दिनू र सबै स्थितिमा सुन दान गर्नू ।

**चतुर्निष्कमितं हेमगजं दद्याद् गजैर्हते ।**
**राज्ञा विनिहते दद्यात् पुरुषन्तु हिरण्मयम् ॥३२॥**

हात्तिबाट मारिए चार निष्क सुनको हात्ती दान गर्नू । राजाबाट
मारिए सुनको मानिस दानमा दिनू ।

**चौरेण निहते धेनुं वैरिणा निहते वृषम् ।**
**वृकेण निहते दद्याद्यथाशक्ति च काञ्चनम् ॥३३॥**

चोरबाट मारिए गाई दान गर्नू, शत्रुबाट मारिए वृषभ दान गर्नू र
ब्वाँसाबाट मारिए यथाशक्ति सुन दान गर्नू ।

**शय्यामृते प्रदातव्या शय्या तुलीसमन्विता ।**

**निष्कमात्रसुवर्णस्य विष्णुना समधिष्ठिता ॥३४॥**

शैयामाथि मरे कपासको गद्दा सहित यस्तो शैया दान गर्नू जसमाथि
निष्क सुनले बनेको विष्णुको मूर्ति राखिएको होस् ।

**शौचहीने मृते चैव द्विनिष्कस्वर्णजं हरिम् ।**
**संस्कारहीने च मृते कुमारञ्च विवाहयेत् ॥३५॥**

शौचहीन मरे दुई निष्कको सुनको विष्णुको मूर्ति दान गर्नू । संस्कारहीन
मरे कुनै कुमारको विवाह गराउनू ।

**शुना हते च निक्षेपं स्थापयेन्निजशक्तितः ।**
**शूकरेण हते दद्यान्महिषं दक्षिणान्वितम् ॥३६॥**

कुकुरले टोकेर मरे गच्छेअनुसार केही धन भविष्यमा पुण्यदानका दृष्टिले राखिछाड्नू ।
सुँगुरले टोकेर मरे दक्षिणासहित भैंसी दान गर्नू ।

**कृमिभिश्च मृते दद्याद् गोधूमान्नं द्विजातये ।**
**श्रृङ्गिणा च हते दद्यात् वृषभं वस्त्रसंयुतम् ॥३७॥**

कीराले मारिए ब्राह्मणलाई गहुँले बनेको भोजन दिनू । सिङ
भएका पशुबाट मारिँदा वस्त्र सहित वृषभ दान दिनू ।

**शकटेन मृते दद्यादश्वं सोपस्करान्वितम् ।**
**भृगुपाते मृते चैव प्रदद्याद्धान्यपर्वतम् ॥३८॥**

गाडीले मारिए काठी सहित घोडा दान गर्नू । अग्लो ठाउँबाट खसेर मरे
अनाजको थुप्रो दानमा दिनू ।

**अग्निना निहते दद्यादुपानहं स्वशक्तितः ।**
**दवेन निहते चैव कर्त्तव्या सदने सभा ॥३९॥**

आगोले डढेर मर्दा गच्छे अनुसार जुत्ता दान गर्नू । दावाग्निमा मरे
आफ्नो घरमा सभा गर्नु पर्दछ ।

**शस्त्रेण निहते दद्यान्महिषीं दक्षिणान्विताम् ।**
**अश्मना निहते दद्यात् सवत्सां गां पयस्विनीम् ॥४०॥**

हतियारले मारिए दक्षिणाका साथमा भैंसी दान गर्नू । पत्थरले मारिए बाच्छा भएकी लैनू गाईको दान गर्नू ।

**विषेण च मृते दद्यान्मेदिनीं क्षेत्रसंयुताम् ।**
**उद्बन्धनमृते चापि प्रदद्याद् गां पयस्विनीम् ॥४१॥**

विषले मारिए खेत-भूमि दान गर्नू । झुण्डिएर मर्दा पनि लैनू गाईको दान गर्नू ।

**मृते जलेन वरुणं हैमं दद्यात्त्रिनिष्ककम् ।**
**वृक्षं वृक्षहते दद्यात् सौवर्णं स्वर्णसंयुतम् ॥४२॥**

पानीमा डुबेर मरे तीन निष्क सुनको वरुणको मूर्ति दान गर्नू । रुखबाट खसेर मर्दा सुनका साथ सुनको रुख दान गर्नू ।

**अतीसारमृते लक्षं सावित्र्याः संयतो जपेत् ।**
**शाकिन्यादिमृते चैव जपेद्रुद्रं यथोचितम् ॥४३॥**

अतीसारले मरे संयमका साथ एक लाख गायत्री जप्नू । शाकिनीबाट मारिए विधिपूर्वक रुद्रको जप गर्नू ।

**विद्युत्पातेन निहते विद्यादानं समाचरेत् ।**
**अस्पर्शे च मृते कार्य्यं वेदपारायणं तथा ॥४४॥**

चटयाङले मर्दा विद्याको दान गर्नू । छुन नहुनेलाई छुँदा मरे वेदको पारायण गर्नू ।

**सच्छास्त्रपुस्तकं दद्याढन्तमाश्रित्य संस्थिते ।**
**पातित्येन मृते कुर्य्यात् प्राजापत्यानि षोडश ॥४५॥**

वमनले गर्दा मरे उत्तम शास्त्र-ग्रन्थ दान गर्नू । पतित भएर मरे सोह्र प्राजापत्य व्रत गर्नू ।

**मृते चापत्यरहिते कृच्छ्राणां नवतिञ्चरेत् ।**
**निष्कत्रयमितस्वर्णं दद्यादश्वं हयाहते ॥४६॥**

सन्तानहीन मर्नेका लागि नब्बे कृच्छ्रव्रत गर्नू । घोडाबाट मारिए तीन निष्क सुनले बनेको घोडा दान गर्नू ।

**कपिना निहते दद्यात् कपिं कनकनिर्मितम् ।**
**विशूचिकामृते स्वादु भोजयेच्च शतं द्विजान् ॥४७॥**

बाँदरले मारिए सुनको बाँदर दान गर्नू । हैजाले मर्दा सय ब्राह्मणलाई मीठो खाना खुवाउनू ।

**तिलधेनुः प्रदातव्या कण्ठेऽन्नकवले मृते ।**
**केशरोगमृते चापि अष्टौ कृच्छ्रान् समाचरेत् ॥४८॥**

घाँटीमा अन्नको गाँस अड्की मरे तिलको गाई दान गर्नू । केशको रोगले मरे आठ कृच्छ्रव्रत गर्नू ।

**एवं कृते बिधानेन विदध्यादौर्ध्वदैहिकम् ।**
**ततः प्रेतत्वनिर्मुक्ताः पितरस्तर्पितास्तथा ॥**
**दद्यु पुत्रांश्च पौत्रांश्च आयुरारोग्यसम्पदः ॥४९॥**

यसरी विधिपूर्वक औध्र्वदैहिक कर्म सम्पन्न गर्नू । त्यसपछि नै प्रेतत्व मुक्त भएका पितृले छोरा, नाति, आयु, आरोग्य र धनसम्पत्ति प्रदान गर्दछन् ।

**इति शातातपप्रोक्तो विपाकः कर्मणामयम् ।**
**शिष्याय शरभङ्गाय विनयात् परिपृच्छते ॥५०॥**

नम्रतापूर्वक सोध्ने भएका आफ्ना शिष्य शरभङ्गलाई शातातप ऋषिले उपदेश दिएका कर्म-विपाक सम्बन्धी यो वर्णन समाप्त भयो ।

॥ इति शातातपीये धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥
॥ शातातपस्मृतिमा मोहन प्रसाद सापकोटाद्वारा गरिएको छैटौं अध्यायको नेपाली भावानुवाद सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-१७९+५०=२२९
शुरुदेखिको श्लोक सङ्ख्या : २२९

॥ समाप्ता चेयं शातातपस्मृतिः ॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको
शातातपस्मृतिको नेपाली
भावानुवाद समाप्त
भएको छ ॥

सबैको कल्याण होस्!